**॥ श्री गणेशाय नमः ॥**

**ॐ**

**श्री परमात्मने नमः**

# ॥ अथ लघुयमस्मृतिः ॥

## ॥ अथ नानाविधप्रायश्चित्तवर्णनम् ॥

**(अनेक प्रकारका प्रायश्चित)**

**श्रुतिस्मृत्युदितं धर्मं वर्णानामनुपूर्वशः ।**
**प्राब्रवीदृषिभिः पृष्टा मुनीनामग्रणीर्यमः ॥१॥**

ऋषिहरुबाट प्रश्न गरिएका मुनिहरूमा श्रेष्ठ यमले श्रुति र स्मृतिले बताएका वर्णधर्मलाई क्रमैले बताउनु भयो ।

**यो भुञ्जानोऽशुचिर्वाऽपि चण्डालं पतितं स्पृशेत् ।**
**क्रोधादज्ञानतो वाऽपि तस्य वक्ष्यामि निष्कृतिम् ॥२॥**

जसले खाना खाँदा वा अपवित्र रहँदा क्रोधले वा थाहा नपाएर पतित अथवा चाण्डाललाई छुन्छ, त्यस्ताको प्रायश्चित बताउँदछु ।

**षड्रात्रं वा त्रिरात्रं वा यथासंख्यं समाचरेत् ।**
**स्नात्वा त्रिषवणं विप्रः पञ्चगव्येन शुध्यति ॥३॥**

पाँच वा तीन रातसम्म ब्राह्मणले नुहाएर त्रिषवण (तीन सन्ध्या सोमसेवन) गर्नू र पञ्चगव्य खानू शुद्ध हुन्छ ।

**भुञ्जानस्य तु विप्रस्य कदाचित्स्रवते गुदम् ।**
**उच्छिष्टत्वेऽशुचित्वे च तस्य शौचं विनिर्दिशेत् ॥४॥**

ब्राह्मणले खाना खाइरहेको अवस्थामा दिसा चुहिए त जुठो र अपवित्रताको लागि शुद्धि गर्नू ।

**पूर्वं कृत्वा द्विजः शौचं पश्चादप उपस्पृशेत् ।**
**अहोरात्रोषितो भूत्वा पञ्चगव्येन शुध्यति ॥५॥**

ब्राह्मणले शौच गरी त्यसपछि आचमन गर्नु । उ दिनरातको उपवास र पञ्चगव्यले शुद्ध हुन्छ ।

**निगिरन्यदि मेहेत भुक्त्वा वा मेहने कृते ।**
**अहोरात्रोषितो भूत्वा जुहुयात्सर्पिषाऽऽहुतीः ॥६॥**

खाना खाँदै गर्दा मूत्र त्याग भएमा वा खाना खाएपछि शुद्ध हुनु पूर्व मूत्र त्याग भएमा दिनरात उपवास बसी घिउको होम गर्नू ।

**यदा भोजनकाले स्यादशुचिर्ब्राह्मणः क्वचित् ।**
**भूमौ निधाय तद् ग्रासं स्नात्वा शुद्धिमवाप्नुयात् ॥७॥**

ब्राह्मण खाना खाइरहेको अवस्थामा केही गरी अशुद्ध हुन गएमा हातको गाँस भुइँमा राखेर नुहाउनाले शुद्ध हुन्छ ।

**भक्षयित्वा तु तद् ग्रासमुपवासेन शुध्यति ।**
**अशित्वा चैव तत्सर्वं त्रिरात्रेणैव शुध्यति ॥८॥**

त्यो गाँस खाएमा उपवास बसेर तथा पूरै खाना खाएमा तीन रातको उपवासले शुद्ध हुन्छ ।

**अश्नतश्चेद्विरेकः स्यादस्वस्थस्त्रिशतं जपेत् ।**
**स्वस्थस्त्रीणि सहस्राणि गायत्र्याः शोधनं परम् ॥९॥**

खाना खाँदा खाँदै ब्राह्मणलाई दिसा हुन गए अस्वस्थ भए तीन सय र स्वस्थ भए तीन हजार गायत्री जप गर्नाले शुद्ध हुन्छ ।

**चण्डालैः श्वपचैः स्पृष्टो विण्मूत्रे तु कृते द्विजः ।**
**त्रिरात्रं तु प्रकुर्वीत भुक्त्वोच्छिष्टः षडाचरेत् ॥१०॥**

ब्राह्मणले मलपूत्र त्याग गर्दा श्वपच र चाण्डालले छोए तीन रात र खाना खाइरहेको बेला छोए पाँच रात उपवास बस्नू ।

**उदक्यां सूतिकां वाऽपि संस्पृशेदन्त्यजो यदि ।**
**त्रिरात्रेण विशुद्धिः स्यादिति शातातपोऽब्रवीत् ॥११॥**

परसरेकी वा सुत्केरीलाई अन्त्यजले छोए तीन रातमा शुद्ध हुन्छे भनेर शातातपले बताएका छन् ।

**रजस्वला तु संस्पृष्टा श्वमातङ्गादिवायसैः ।**
**निराहारा शुचिस्तिष्ठेत्कालस्नानेन शुध्यति ॥१२॥**

परसरेकीलाई कुकुर, हाती, काग आदिले छोए निराहार बसेर वा समय आएपछि नुहाएर शुद्ध हुन्छे ।

**रजस्वले यदा नार्यावन्योन्यं स्पृशतः क्वचित् ।**
**शुध्यतः पञ्चगव्येन ब्रह्मकूर्चेन चोपरि ॥१३॥**

परसरेका स्त्रीहरुले एकअर्कोलाई छोए पञ्चगव्य खाई कुशको कुचोले शरीरमा जल छर्कन लगाउनाले शुद्ध हुन्छन् ।

**उच्छिष्टेन च संस्पृष्टा कदाचित्स्त्री रजस्वला ।**
**कृच्छ्रेण शुद्धिमाप्नोति शूद्रा दानोपवासतः ॥१४॥**

जुठो मुख भएका पुरुषले छोइएकी रजस्वला बाहुनी कृच्छ्र व्रतले तथा रजस्वला शूद्रा दान र उपवासले शुद्ध हुन्छे ।

**अनुच्छिष्टेन संस्पृष्टे स्नानं येन विधीयते ।**
**तेनैवोच्छिष्टसंस्पृष्टः प्राजापत्यं समाचरेत् ॥१५॥**

जुठो मुख नभएका पुरुषले छुँदा नुहाउने विधान भए जस्तै जुठो मुख भएकाले छुँदा प्राजापत्य व्रत गर्नु पर्दछ ।

**ऋतौ तु गर्भशङ्कित्वात्स्नानं मैथुनिनः स्मृतम् ।**
**अनृतौ तु स्त्रियं गत्वा शौचं मूत्रपुरीषवत् ॥१६॥**

गर्भको विचारले ऋतुकालमा सम्भोग गर्नेलाई नुहाउने र ऋतुकाल बाहेकमा सम्भोग गरे शौचपछि गरिने शुद्धताकै विधान गर्नू ।

**भावप्यशुची स्यातां दम्पती शयनं गतौ ।**

**शयनादुत्थिता नारी शुचिः स्यादशुचिः पुमान्॥१७॥**

ओछ्यानमा पतिपत्नी दुबै अपवित्र हुन्छन् । ओछ्यानबाट उठेर स्त्री शुद्ध हुन्छे तर पुरुष अशुद्धै हुन्छ ।

**भर्तुः शरीरशुश्रूषां दौरात्म्यादप्रकुर्वती ।**
**दण्ड्या द्वादशकं नारी वर्षं त्याज्या धनं विना॥१८॥**

दुष्टताले गर्दा पतिको सेवा नगरेर दण्डनीय भएकी नारी बिना धन बाह्र वर्षका लागि त्याज्य हुन्छे ।

**त्यजन्तोऽपतितान्बन्धून्दण्ड्या उत्तमसाहसम् ।**
**पिता हि पतितः कामं न तु माता कदाचन॥१९॥**

अपतित बन्धुलाई त्याग्ने व्यक्ति उत्तम साहसको दण्डको भागी हुन्छ । पिता पतित भएर त्याज्य भए पनि माता कहिल्यै त्याज्य हुन्नन् ।

**आत्मानं घातयेद्यस्तु रज्ज्वादिभिरुपक्रमैः ।**
**मृतोऽमेध्येन लेप्तव्यो जीवतो द्विशतं दमः॥२०॥**

डोरी आदिद्वारा आत्महत्या गर्नेको शरीरलाई अपवित्र (मलआदि) वस्तुले लिप्नू । यस्ता व्यक्ति बाँचे दुई सय जरिवाना गर्नू ।

**दण्ड्यास्तत्पुत्रमित्राणि प्रत्येकं पणिकं दमम् ।**
**प्रायश्चित्तं ततः कुर्युर्यथाशास्त्रप्रचोदितम्॥२१॥**

यस्ताका छोरा र साथी पनि दण्डनीय हुन्छन् । प्रत्येकलाई एक-एक पण तिराउनू । त्यसपछि सबैले शास्त्र अनुसार प्रायश्चित गर्नू ।

**जलाद्युद्बन्धनभ्रष्टाः प्रव्रज्यानाशकच्युताः ।**
**विषप्रपतनप्रायशस्त्रघातहताश्च ये॥२२॥**
**न चैते प्रत्यवसिताः सर्वलोकबहिष्कृताः ।**
**चान्द्रायणेन शुध्यन्ति तप्तकृच्छ्रद्वयेन वा॥२३॥**

पानी आदिमा डुबेर वा झुण्डिएर मर्न असफल, सन्यासबाट पतित तथा विष खाएर, अग्लो ठाउँबाट हाम फालेर, भोकै बसेर वा हतियार प्रयोग गरेर मर्न खोजेर बाँच्नेलाई सबैले बहिष्कार गर्नू । यिनीहरु चान्द्रायण अथवा दुई तप्तकृच्छ्र व्रतले शुद्ध हुन्छन् ।

**उभयावसितः पापः श्यामाच्छबलकाच्च्युतः ।**
**चान्द्रायणाभ्यां शुध्येत दत्त्वा धेनुं तथा वृषम् ॥२४॥**

कालो वा झालेमाले साँढेबाट लडेर बाँचेको पापी मानिस गाई र साँढे दान गरी दुई चान्द्रायण व्रत बसेर शुद्ध हुन्छ ।

**श्वशृगालप्लवङ्गाद्यैर्मानुषैश्चरतिं विना ।**
**दष्टः स्नात्वा शुचिः सद्यो दिवा संध्यासु रात्रिषु ॥२५॥**

कुकुर, स्याल, बाँदर आदि र सम्भोगमा बाहेक मानिसले टोकिएको व्यक्ति दिन, साँझ तथा रातमा तुरुन्त नुहाउनाले शुद्ध हुन्छ ।

**अज्ञानाद् ब्राह्मणो भुक्त्वा चण्डालान्नं कदाचन ।**
**गोमुत्रयावकाहारो मासार्धेन विशुध्यति ॥२६॥**

ब्राह्मणले अनजानमा चण्डालको अन्न खाए गहुँत र जौले बनेका परिकार खाएर पन्ध्र दिनमा राम्रोसँग शुद्ध हुन्छ ।

**गोब्राह्मणगृहं दग्ध्वा मृतं चोद्बन्धनादिना ।**
**पाशांश्छित्त्वा तथा तस्य कृच्छ्रमेकं चरेद् द्विजः ॥२७॥**

गाई वा ब्राह्मणको घर जलाए, झुण्डिएर मरेकालाई जलाएमा तथा झुण्डिनेको पासो काटेमा द्विजले एक कृच्छ्र व्रत गर्नू ।

**चण्डाल पुल्कसानां च भुक्त्वा गत्वा च योषितम् ।**
**कृच्छ्राब्दमाचरेज्ज्ञानादज्ञानादैन्दवद्वयम् ॥२८॥**

जानाजान चाण्डाल र पुक्कसका घरको खाना खाए र ती स्त्रीसँग सुते एक वर्ष कृच्छ्र गर्नू । अनजानमा सुते दुई चान्द्रायण व्रत गर्नू ।

**कापालिकान्नभोक्तृणां तन्नारीगामिनां तथा ।**
**कृच्छ्राब्दमाचरेज्ज्ञानादज्ञानादैन्दवद्वयम् ॥२९॥**

जानाजान कापालिकका घरको खाना खाए वा ती स्त्रीसँग सुते एक वर्षसम्म कृच्छ्र गर्नू । अनजानमा खाए दुई चान्द्रायण व्रत गर्नू ।

**अगम्यागमने विप्रो मद्य गोमांसभक्षणे ।**
**तप्तकृच्छ्रपरिक्षिप्तो मौर्वीहोमेन शुध्यति ॥३०॥**

अयोग्या गमन गर्ने, मदिरा पिउने र गाईको मासु खाने ब्राह्मण तप्तकृच्छ्र व्रत बसी मौर्वी (जनै) होम गर्नाले शुद्ध हुन्छ ।

**महापातककर्तारश्चत्वारोथविशेषतः ।**
**अग्निं प्रविश्य शुध्यन्ति स्थित्वा वा महति क्रतौ ॥३१॥**

चारै प्रकारका महापापीहरु विशेषतः अग्निमा प्रवेश गरेर वा महायज्ञ गरेर शुद्ध हुन्छन् ।

**रहस्यकरणेऽप्येवं मासमभ्यस्य पूरुषः ।**
**अघमर्षणसूक्तं वा शुध्येदन्तर्जले स्थितः ॥३२॥**

लुकीछिपी महापाप गर्नेहरु पनि यसरी महिनाभरी पटकपटक प्रायश्चित वा पानीमा उभिई अघमर्षण जप्नाले शुद्ध हुन्छन् ।

**रजकश्चर्मकारश्च नटो बुरुड एव च ।**
**कैवर्तमेदभिल्लाश्च सप्तैते अन्त्यजाः स्मृताः ॥३३॥**

धोबी, चर्मकार, नट, बुरुड, केवट, मेद र भिल्ल- यी सातलाई अन्त्यज मानिएको छ ।

**भुक्त्वा चैषां स्त्रियो गत्वा पीत्वाऽपः प्रतिगृह्य च ।**
**कृच्छ्राब्दमाचरेज्ज्ञानादज्ञानादैन्दवद्वयम् ॥३४॥**

जानाजान अन्त्यजको अन्न खाए, ती स्त्री भोगे, पानी पिए वा तिनबाट दानलिए एक वर्ष कृच्छ्र र अनजानमा गरे दुई चान्द्रायण व्रत गर्नू ।

**मातरं गुरुपत्नीं च स्वसृ दुहितरौ स्नुषाम् ।**

**गत्वैताः प्रविशेदग्निं नान्या शुद्धिर्विधीयते ॥३५॥**

माता, गुरुपत्नी, दिदीबहिनी, छोरी, छोराकी पत्नीलाई सम्भोग गरे अग्निप्रवेश गर्नू । यसको अरु शुद्धीको तरिका छैन ।

**राज्ञीं प्रव्रजितां धात्रीं वर्णोत्तमामपि ।**
**कृच्छ्रद्वयं प्रकुर्वीत सगोत्रामभिगम्य च ॥३६॥**

रानी, सन्यासिनी, धाईआमा तथा सगोत्रीया स्त्री र उत्तम जातकी स्त्रीलाई सम्भोग गरे दुई कृच्छ्रव्रत गर्नू ।

**अन्यासु पितृगोत्रासु मातृगोत्रगतास्वपि ।**
**परदारेषु सर्वेषु कृच्छ्र सान्तपनं चरेत् ॥३७॥**

अन्य पिताका गोत्रका, माताका गोत्रका तथा सबै प्रकारका परस्त्री संभोग गरे सान्तपन कृच्छ्रव्रत गर्नू ।

**वेश्याभिगमने पापं व्यपोहन्ति द्विजातयः ।**
**पीत्वा सकृत्सुतप्तं च पञ्चरात्रं कुशोदकम् ॥३८॥**

वेश्यागमनको पापबाट शुद्ध हुन द्विजातिले राम्ररी तताइएको कुश पानी पाँच रातसम्म एक पटक पिउनू ।

**गुरुतल्पव्रतं केचित् केचिद् ब्रह्महणो व्रतम् ।**
**गोघ्नस्य केचिदिच्छन्ति केचिच्चैवावकीर्णिनः ॥३९॥**

वेश्यागमनको प्रायश्चितका लागि गुरुपत्नी गमन वा ब्रह्महत्या वा गोहत्या वा ब्रह्मचर्य खण्डन व्रतको कसैकसैले इच्छा गर्दछन् ।

**दण्डादूर्ध्वप्रहारेण यस्तु गां विनिपातयेत् ।**
**द्विगुणं गोव्रतं तस्य प्रायश्चित्तं विनिर्दिशेत् ॥४०॥**

लाठोले माथितिर हानी गाईलाई भुईंमा लडाउने व्यक्तिलाई दोबर गोव्रतको प्रायश्चित गर्न लगाउनू ।

**अङ्गुष्ठमात्रस्थूलस्तु बाहुमात्रप्रमाणकः ।**
**सार्द्रश्चसपलाशश्चगोदण्डः परिकीर्तितः ॥४१॥**

बुढी औँला जति मोटो, एक हात लामो, काँचो र पात सहितको लौरो गाईलाई पिट्ने लौरो बताइएको छ ।

**एकैकशश्चरेत्कृच्छ्रं यथापूर्वं तथा पुनः ॥४२॥**

गाई पछारिँदा गर्भ पनि खसे प्रत्येक द्विजातिले गाईलाई लडाउँदा गर्नुपर्ने पहिले बताइएको कृच्छ्र व्रत फेरी गर्नू ।

**पादमुत्पन्नमात्रे तु द्वौ पादौ गात्रसंभवे ।**
**पादोनं कृच्छ्रमाचष्टे हत्वा गर्भमचेनतम् ॥४३॥**

लाठो हानी गाईको भर्खरको गर्भ तुहिए एक चौथाई, शरीर बनेको तुहिए आधा र अचेतन तुहिए तीनचौथाई कृच्छ्र व्रत गराउनू ।

**अङ्गप्रत्यङ्गसंपूर्णे गर्भे रेतःसमन्विते ।**
**एकैकशश्चरेत्कृच्छ्रमेषा गोघ्नस्य निष्कृतिः ॥४४॥**

सबै अङ्गप्रत्यङ्ग विकसित भएको र वीर्ययुक्त गर्भ तुहिएमा प्रत्येक द्विजातिले कृच्छ्र व्रत गर्नू, यही गोहत्याराको प्रायश्चित हो ।

**बन्धने रोधने चैव पोषणे वा गवां रुजा ।**
**संपद्यते चेन्मरणं निमित्ती नैव लिप्यते ॥४५॥**

गाईलाई बाँधेर, रोकेर, पालनपोषण गरेर वा कुनै रोग लागेर मृत्यु भए संलग्न व्यक्ति पापमा लिप्त हुँदैन ।

**मूर्च्छितः पतितो वाऽपि दण्डेनाभिहतस्तथा ।**
**उत्थाय षट् पदं गच्छेत् सप्त पञ्च दशापि वा ॥४६॥**
**ग्रासं वा यदि गृह्णीयात्तोयं वाऽपि पिबेद्यदि ।**
**पूर्वव्याधिप्रनष्टानां प्रायश्चित्तं न विद्यते ॥४७॥**

बेहोस भएको, लडेको वा लाठोले पिटिएको गाईगोरु यदि उठेर छ, सात, पाँच वा दश पाइला हिँड्यो वा घाँस खायो वा पानी पियो भने अथवा पहिलेदेखि रोगी भएको गाईगोरु मर्दा प्रायश्चित गर्नुपर्दैन ।

**काष्ठलोष्टाश्मभिर्गावः शस्त्रैर्वा निहता यदि ।**
**प्रायश्चित्तं कथं तत्र शास्त्रे शास्त्रे निगद्यते ॥४८॥**

लौरो, डल्लो, ढुङ्गो वा हतियारले हानी गाई मरे त्यसबेला कस्तो प्रायश्चित गर्नु पर्दछ, यो सबै शास्त्रका कुरा म बताउँदछु ।

**गवां निपातने चैव गर्भोऽपि संपतेद्यदि ।**
**काष्ठे सान्तपनं कुर्यात्प्राजापत्यं तु लोष्टके ॥**
**तप्तकृच्छ्रं तु पाषाणे शस्त्रे चाप्यतिकृच्छ्रकम् ॥४९॥**

लाठोले हान्दा गाई मरे सान्तपन, डल्लोले हान्दा मरे प्राजापत्य, ढुङ्गाले हान्दा मरे तप्तकृच्छ्र र हतियारले हान्दा मरे अतिकृच्छ्र व्रत गर्नू ।

**यौषधं स्नेहमाहारं ददद् गोब्राह्मणेषु तु ।**
**दीयमाने विपत्तिः स्यात्प्रायश्चित्तं न विद्यते ॥५०॥**

गाई तथा ब्राह्मणलाई औषधी दिँदा, घिउ-तेल आदि पियाउँदा वा खाना खुवाउँदा कुनै दुर्घटना भए प्रायश्चित गर्नु पर्दैन ।

**तैलभैषज्यपाने च भेषाजानां च भक्षणे ।**
**निःश्लयकरणे चैव प्रायश्चित्तं न विद्यते ॥५१॥**

गाई आदिलाई औषधी खुवाउँदा पियाउँदा वा काँडा आदि झिक्दा  तिनलाई हुने दुःखको लागि कुनै प्रायश्चित गर्नु पर्दैन ।

**वत्सानां कण्ठबन्धेन क्रियया भेषजेन तु ।**
**सायं संगोपनार्थं च न दोषो रोधबन्धयोः ॥५२॥**

बाछाको घाँटीमा दाम्लो बाँध्ने, औषधी दिने आदि  गर्दा वा साँझमा रक्षार्थ छेक्दा वा बाँध्दा हुने दुःखको लागि कुनै दोष हुँदैन ।

**पादे चैवास्य रोमाणि द्विपादे श्मश्रु केवलम् ।**
**त्रिपादे तु शिखावर्जं मूले सर्वं समाचरेत् ।।५३।।**

पादकृच्छ्र गर्दा पुरुषका सबै रौं, अर्द्धकृच्छ्रमा दाऱ्हीजुँगा, पौने कृच्छ्रमा टुपी बाहेक सबै कपाल र पूर्णकृच्छ्रमा टुपी समेत सबै कपाल काट्न लगाउनू ।

**सर्वाकेशान्समुद्धृत्य च्छेदयेदङ्गुलद्वयम् ।**
**एवमेव हि नारीणां मुण्डमुण्डापनं स्मृतम् ।।५४।।**

सबै कपाललाई माथि उठाई दुई अङ्गुल कटाउनू । यसरी नारीको सिर मुण्डनको विधि बताइएको छ ।

**न स्त्रिया वपनं कार्यं न च वीरासनं तथा ।**
**न च गोष्ठे निवासोऽस्ति न गच्छन्तीमनुव्रजेत् ।।५५।।**

स्त्रीको मुण्डन नगर्नू, योगको वीरासनमा नबस्नू, गोठमा नबस्नू तथा हिँडिरहेकी गाईको पछिपछि पनि नहिँड्नू ।

**राजा वा राजपुत्रो वा ब्राह्मणो वा बहुश्रुतः ।**
**अकृत्वा वपनं तेषां प्रायश्चित्तं विनिर्दिशेत् ।।५६।।**

राजा, राजकुमार वा विद्वान ब्राह्मणले स्त्रीको मुण्डन नगराउनू गराए त्यसको प्रायश्चित गर्नु पर्दछ ।

**केशानां रक्षणार्थं च द्विगुणं व्रतमादिशेत् ।**
**द्विगुणं तु व्रते चीर्णे द्विगुणैव तु दक्षिणा ।।५७।।**

केशको रक्षाका लागि दोब्बर व्रतको आदेश दिनू तथा दोब्बर व्रत गरे पछि दोब्बर दक्षिणा समेत दिनू ।

**द्विगुणं चेन्न दत्तं च केशांश्च परिरक्षयेत् ।**
**पापं न क्षीयते हन्तुर्दाता च नरकं व्रजेत् ।।५८।।**

कपाल जोगाउन चाहनेले दोब्बर दक्षिणा दिएन भने उसको पाप नष्ट हुँदैन र काट्ने पनि नरकमा पर्दछ ।

**अश्रौतस्मार्तविहितं प्रायश्चित्तं वदन्ति ये ।**
**तान् धर्मविघ्नकर्तृंश्च राजा दण्डेन पीडयेत् ॥५९॥**

वेद र स्मृतिमा नबताइएको प्रायश्चितका कुरा बताएर धर्ममा बाधा पुऱ्याउनेलाई राजाले दण्ड दिनू ।

**न चेत्तान्पीडयेद्राजा कथंचित्काममोहितः ।**
**तत्पापं शतधा भूत्वा तमेव परिसर्पति ॥६०॥**

कुनै इच्छाले मोहवश त्यस्तालाई दण्ड नदिए त्यो पाप सय गुना भएर राजालाई नै लाग्दछ ।

**प्रायश्चित्ते ततश्चीर्णे कुर्याद् ब्राह्मणभोजनम् ।**
**विंशतिं गा वृषं चैव दद्यात्तेषां च दक्षिणाम् ॥६१॥**

तब राजाले प्रायश्चित गरी ब्राह्मणलाई भोजन गराउनू, बीस गाई र एउटा साँढे दानमा दिनू तथा ती ब्राह्मणलाई दक्षिणा दिनू ।

**कृमिभिर्व्रणसंभूतैर्मक्षिकाभिश्च पातितैः ।**
**कृच्छ्रार्धं संप्रकुर्वीत शक्त्या दद्याच्च दक्षिणाम् ॥६२॥**

झिँगा बसेर यदि घाउमा कीरा पर्न गए अर्द्धकृच्छ्र व्रत बसी गच्छे अनुसार दक्षिणा दिनू ।

**प्रायश्चित्तं च कृत्वा वै भोजयित्वा द्विजोत्तमान् ।**
**सुवर्णमाषकं दद्यात्ततः शुद्धिर्विधीयते ॥६३॥**

प्रायश्चित गरेर उत्तम ब्राह्मणलाई भोजन गराई एक मासा सुन दान गरे पछि शुद्ध हुन्छ भनी बताइएको छ ।

**चण्डालश्वपचैः स्पृष्टे निशि स्नानं विधीयते ।**
**न वसेत्तत्र रात्रौ तु सद्यः स्नानेन शुध्यति ॥६४॥**

रातमा चण्डाल र श्वपचलाई छुँदा नुहाउने विधान छ । त्यहाँ रातमा वास नबसेमा नुहाउनाले तुरुन्त शुद्धि हुन्छ ।

**अथ वसेद्यदा रात्रावज्ञानादविचक्षणः ।**
**तदा तस्य तु तत्पापं शतधा परिवर्तते ॥६५॥**

तर यदि बुद्धि नभएको व्यक्ति अज्ञानले बास बस्दछ भने त त्यो पाप सय गुणामा परिवर्तन हुन्छ ।

**उद्गच्छन्ति हि नक्षत्राण्युपरिष्टाच्च ये ग्रहाः ।**
**संस्पृष्टे रश्मिभिस्तेषामुदके स्नानमाचरेत् ॥६६॥**

माथिबाट हिँडिरहेका जुन् ग्रह नक्षत्र हुन्छन् तिनको किरणले छोइएमा पानीमा नुहाउनू ।

**कुड्यान्तर्जलवल्मीकमूषिकोत्करवर्त्मसु ।**
**श्मशाने शौचशेषे च न ग्राह्याः सप्त मृत्तिकाः ॥६७॥**

पर्खाल, पानी भित्र, धमिराको गोलोको, मुसाले थुपारेको, बाटो, मसान र शौचक्रिया गरेर बाँकी रहेको-यी सात थरी माटो (शौचका लागि) प्रयोग नगर्नू ।

**इष्टापूर्तं तु कर्तव्यं ब्राह्मणेन प्रयत्नतः ।**
**इष्टेन लभते स्वर्गं पूर्ते मोक्षं समश्नुते ॥६८॥**

ब्राह्मणले प्रयत्नपूर्वक इष्ट (यज्ञादि) र पूर्त (जनहीतका काम) गर्नू । इष्टले स्वर्ग र पूर्तले मोक्ष पाइन्छ ।

**वित्तापेक्षं भवेदिष्टं तडागं पूर्तमुच्यते ।**
**आरामश्च विशेषेण देवद्रोण्यस्तथैव च ॥६९॥**

इष्टकर्म आर्थिक क्षमता अनुसार हुन्छ । तलाउ अझ विशेष गरी बगैंचा तथा देवकुण्ड आदि बनाउनु पूर्तकर्म मानिन्छ ।

**वापीकूपतडागानि देवतायतनानि च ।**
**पतितान्युद्धरेद्यस्तु स पूर्तफलमश्नुते ॥७०॥**

पुराना पोखरी, कुवा, तलाउ र देवमन्दिरको जिर्णोद्धार गराउने व्यक्तिले पनि पूर्तकर्मको फल पाउँदछ ।

**शुक्लाया मूत्रं गृह्णीयात्कृष्णाया गोः शकृत्तथा ।**
**ताम्रायाश्च पयो ग्राह्यं श्वेताया दधि चोच्यते ॥७१॥**

सेतो गाईको गहुँत, कालो गाईको गोबर, रातो गाईको दूध तथा सेतै गाईको दही लिनू भनी बताइएको छ ।

**कपिलाया घृतं ग्राह्यं महापातनाशनम् ।**
**सर्वतीर्थे नदीतोये कुशैर्द्रव्यं पृथक्पृथक् ॥७२॥**

कैली गाईको घिउ लिनू (यसरी तयार गरिएको पञ्चगव्य) महापाप नाशक हुन्छ । सबै तीर्थ तथा नदीको जलमा बेग्लाबेग्लै यी पदार्थलाई कुशले ...।

**आहृत्य पणवेनैव ह्युत्थाप्य प्रणवेन च ।**
**प्रणवेन समालोड्य प्रणवेन तु संपिबेत् ॥७३॥**

ॐ भन्दै मिसाएर ॐ भन्दै उठाई ॐ भन्दै चलाएर ॐ भन्दै पिउनू ।

**पालाशे मध्यमे पर्णे भाण्डे ताम्रमये तथा ।**
**पिबेत्पुष्करपर्णे वा ताम्रे वा मृण्मये शुभे ॥७४॥**

पलाँशका तीनमध्ये बीचको पातमा वा तामाको भाँडामा वा कमलको पातमा वा  माटोका शुभ रातो भाँडामा पञ्चगव्य पिउनू ।

**सूतके तु समुत्पन्ने द्वितीये समुपस्थिते ।**
**द्वितीये नास्ति दोषस्तु प्रथमेनैव शुध्यति ॥७५॥**

सूतक परिरहेको अवस्थामा दोश्रो सूतक आइपरे दोश्रो सूतकबाट कुनै दोष उत्पन्न हुँदैन । पहिलोको शुद्धताबाटै शुद्धि हुन्छ ।

**जातेन शुध्यते जातं मृतेन मृतकं तथा ।**
**गर्भसंस्रवणे मासे त्रीण्यहानि विनिर्दिशेत् ॥७६॥**

पहिलो सूतक सँगै दोश्रो सूतक तथा पहिलो जुठो सँगै दोश्रो जुठो शुद्ध हुन्छ । एक महिनासम्मको गर्भस्राव भए तीन दिन सूतक लाग्दछ ।

**रात्रिभिर्मासतुलाभिर्गर्भस्रावे विशुध्यति ।**
**रजस्युपरते साध्वी स्नानेन स्त्री रजस्वला ॥७७॥**

जति महिनाको गर्भस्राव भएको त्यति रातमा स्त्री शुद्ध हुन्छे । पतिव्रता स्त्री परसरी पछि रजनिवृत्ति भएको दिन स्नानले शुद्ध हुन्छे ।

**सगोत्राद् भ्रश्यते नारी विवाहात्सप्तमे पदे ।**
**स्वामिगोत्रेण कर्तव्यास्तस्याः पिण्डोदकक्रियाः ॥७८॥**

विवाहमा सात पाइला हिँडेपछि नारी पिताको गोत्रबाट छुट्दछे । तिनको पिण्ड, जलदान आदि कर्म पतिको गोत्र अनुसार गरिनु पर्दछ ।

**द्वे पितुः पिण्डदानं स्यात्पिण्डे पिण्डे द्विनामता ।**
**षण्णां देवास्त्रयः पिण्डा एवं दाता न मुह्यति ॥७९॥**

पितालाई दुई पिण्ड दिइन्छ । प्रत्येक पिण्डमा (पती र पत्नीका) दुई नामको उच्चारण गरिन्छ । छलाई तीन पिण्ड दिनु पर्ने हुन्छ । यसरी पिण्ड दिने व्यक्ति मोहमा पर्दैन ।

**स्वेन भर्त्रा सह श्राद्धं माता भुक्त्वा सदैवतम् ।**
**पितामह्यपि स्वेनैव स्वेनैव प्रपितामही ॥८०॥**

माता आफ्नो पतिसँगै विश्वेदेवाका साथमा श्राद्ध भक्षण गर्दछिन् । हजूरआमा तथा कुप्री आमा आफ्नो पतिका साथ खान्छिन् ।

**वर्षे वर्षे तु कुर्वीत मातापित्रोस्तु सत्कृतिम् ।**
**अदैवं भोजयेच्छ्राद्धं पिण्डमेकं तु निर्वपेत् ॥८१॥**

वर्षैपिच्छे आमाबाबुको श्राद्ध गर्नू । विश्वेदेवाको पूजा नगरी श्राद्ध गर्नू र एउटा पिण्ड दिनू ।

**नित्यं नैमित्तिकं काम्यं वृद्धिश्राद्धमथापरम् ।**
**पार्वणं चेति विज्ञेयं श्राद्धं पञ्चविधं वुधैः ॥८२॥**

नित्य, नैमित्तिक, काम्य, वृद्धि र पार्वण गरी पाँच थरी श्राद्धलाई विद्वानहरुले मानि आएका छन् ।

(नोट :- प्रतिदिन गरिने श्राद्धलाई नित्य, पर्वविशेषमा गरिने श्राद्धलाई नैमित्तिक र कुनै इच्छा परिपूर्तिका लागि गरिने श्राद्धलाई काम्य भनिन्छ ।)

**ग्रहोपरागे संक्रान्तौ पर्वोत्सवमहालयोः ।**
**निर्वपेत्त्रीन्नरः पिण्डानेकमेव मृतेऽहनि ॥८३॥**

ग्रहणमा, संक्रान्तिमा, पर्व वा उत्सवमा गरिने श्राद्धमा र सोहश्राद्धमा तीन पिण्ड दिनू । मृत्युका दिन गरिने एकोद्दिष्ट श्राद्धमा एउटा मात्र पिण्ड दिनू ।

**अनूढा न पुथक् कन्या पिण्डे गोत्रे च सूतके ।**
**पाणिग्रहणमन्त्राभ्यां स्वगोत्राद् भ्रश्यते ततः ॥८४॥**

अविवाहिता कन्या पिण्ड, गोत्र र सूतकमा बाबुको परिवारबाट अलग हुन्न । त्यसपछि पाणिग्रहण र विवाहका मन्त्रले उनी आफ्नो गोत्रबाट अलग हुन्छिन् ।

**येन येन तु वर्णेन या कन्या परिणीयते ।**
**तत्समं सूतकं याति तथा पिण्डोदकेऽपि च ॥८५॥**

जुन जुन वर्णसँग जो जो केटी विवाह गरिन्छे त्यही अनुसार सूतक, पिण्डदान र जलदानको कर्ममा प्राप्त हुन्छे ।

**विवाहे चैव संवृत्ते चतुर्थेऽहनि रात्रिषु ।**
**एकत्वं सा व्रजेद्भर्तुः पिण्डे गोत्रे च सूतके ॥८६॥**

विवाह गरेपछि चौथो दिन वा रातमा ती कन्याले पिण्ड, गोत्र र सूतकमा पतिका साथ एकता प्राप्त गर्दछिन् ।

*नोट : माथि श्लोक ७८, ८४, ८५ र ८६ मा बताइएको कारणले गर्दा नै विवाहिता छोरीलाई छोरा सरहको आशौच आदिमा अधिकार नभएको हो ।*

**प्रथमेऽह्नि द्वितीये वा तृतीये वा चतुर्थके ।**
**अस्थिसञ्चयनं कार्यं बन्धुभिर्हितबुद्धिभिः ॥८७॥**

पहिलो, दोश्रो, तेश्रो, चौथो, पाँचौं, सातौं र नवौं दिन हितैषी बन्धुको अस्थिसञ्चयन गर्नु पर्दछ ।

**चतुर्थे पञ्चमे चैव सप्तमे नवमे तथा ।**
**अस्थिसञ्चयनं प्रोक्तं वर्णानामनुपूर्वशः ॥८८॥**

ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्रले क्रमशः चौथो, पाँचौं, सातौं र नवौं दिन अस्थिसञ्चयन गर्नुपर्ने बताइएको छ ।

**एकादशाहे प्रेतस्य यस्य चोत्सृज्यते वृषः ।**
**मुच्यते प्रेतलोकात्स स्वर्गलोके महीयते ॥८९॥**

जुन प्रेतका लागि एघारौं दिन वृषोत्सर्ग गरिन्छ, उ प्रेतलोकबाट छुटी स्वर्गलोकमा पूजिन पुग्दछ ।

**गंगातोयेषु यस्यास्थि प्लवते शुभकर्मणः ।**
**न तस्य पुनरावृत्तिब्रह्मलोकात्कथंचन ॥९०॥**

शुभकर्म गर्नेले जुन मृतकको अस्थिलाई गङ्गामा बहाउँछ, त्यसले ब्रह्मलोकबाट कुनै पनि तरिकाले फर्कनु पर्दैन ।

**यावदस्थि मनुष्याणां गंगातोयेषु तिष्ठति ।**
**तावद्वर्षसहस्राणि स्वर्गलोके महीयते ॥९१॥**

जबसम्म मानिसको अस्थि गङ्गामा रहन्छ तबसम्म हजारौं वर्ष उ स्वर्गमा पूजिन्छ ।

**नाभिमात्रे जले स्थित्वा हृदयेनानुचिन्तयेत् ।**
**आगच्छन्तु मे पितरो गृह्णन्त्वेताञ्जलाञ्जलीन् ॥९२॥**

नाइटोसम्म आउने जलमा उभिएर मनमा चिन्तन गर्नु कि मेरा पितृ आउन् र यो जलाञ्जली ग्रहण गरुन् ।

**हस्तौ कृत्वा सुसंयुक्तौ पूरयित्वा जलेन च ।**
**गोश्रृङ्गमात्रमुद्धृत्य जलमध्ये जलं क्षिपेत् ॥९३॥**

दुबै हातलाई टम्म पारी जलले भरी गाईको सिङ समान माथि उठाई त्यो जल जलको बीचमा हाल्नू ।

**आकाशे च क्षिपेद्वारि वारिस्थो दक्षिणामुखः ।**
**पितृणां स्थानमाकाशं दक्षिणा दिक्तथैव च ॥९४॥**

जलमा उभिएर, दक्षिण फर्की आकाशमा जल फ्याँक्नू । आकाश र दक्षिण दिशा पितृको स्थान हो ।

**आपो देवगणाः प्रोक्ता आपः पितृगणास्तथा ।**
**अस्माद्प्सु जलं देयं पितृणां हितमिच्छता ॥९५॥**

जल नै देवगण, पितृगण भनी बताइएको छ । यसैले पितृको हित चाहने मानिसले जलमा जल दिनु पर्दछ ।

**दिवा सूर्यांशुभिस्तप्तं रात्रौ नक्षत्रमारुतैः ।**
**सन्ध्ययोरप्युभाभ्यां च पवित्रं सर्वदा जलम् ॥९६॥**

दिनमा घामले तातेको, रातमा नक्षत्र र हावाले तथा सन्ध्यामा यी दुवै कुराले गर्दा जल सदा पवित्र रहन्छ ।

**स्वभावयुक्तमव्याप्तममेध्येन सदा शुचि ।**
**भाण्डस्थं धरणीस्थं वा पवित्रं सर्वदा जलम् ॥९७॥**

अपवित्र वस्तु नपरेको प्राकृतिक जल सधैं पवित्र हुन्छ । भाँडामा वा भूमीमा रहेको जल पनि सधैं पवित्र हुन्छ ।

**देवतानां पितृणां च जले दद्याज्जलाञ्जलीन् ।**
**असंस्कृतप्रमीतानां स्थले दद्याज्जलाञ्जलीन् ॥९८॥**

मानिसले जलाञ्जली दिँदा देवता र पितृलाई पानीमा र संस्कार नगरी मरेकालाई जमिनमा दिनु पर्दछ ।

**श्राद्धे हवनकाले च दद्यादेकेन पाणिना ।**

उभाभ्यां तर्पणे दद्यादिति धर्मो व्यवस्थितः ॥९९॥

श्राद्ध र यज्ञमा एक हातले पिण्ड र आहुति दिनू । तर्पणमा दुवै हातले जलाञ्जली दिनू । यही धर्मसम्मत व्यवस्था हो ।

॥ इति लघुयमप्रणितं धर्मशास्त्रं समाप्तम् ॥

॥ लघुयमबाट रचना गरिएको धर्मशास्त्रको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



सबैको कल्याण होस् !